# क्षतिपूर्ति ऐन, २०१९

लालमोहर र प्रकाशन मिति

२०१९।१२।३०

२०१९ सालको ऐन नं. ५६

**क्षतिपूर्तिको व्यवस्था गर्न बनेको ऐन**

**प्रस्तावना** : नेपाल कानून बमोजिम नेपाल सरकारले प्राप्त गरेको वा प्राप्त गरिने सम्पत्तिको क्षतिपूर्ति दिन वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट नेपालको संविधानको धारा ९३ अनुसार यो ऐन बनाइबक्सेकोछ ।

१. **संक्षिप्त नाम, र प्रारम्भ**: (१) यो ऐनको नाम “क्षतिपूर्ति ऐन, २०१९” रहेको छ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा**: विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा-

(क) “सम्पत्ति” भन्नाले प्रचलित नेपाल कानून बमोजिम प्राप्त गरेको वा प्राप्त गरिने जुनसुकै सम्पत्तिलाई सम्झनुपर्छ ।

(ख) “धनी” भन्नाले स्टक पाएको वा सो स्टकमा हक भएको व्यक्तिलाई सम्झनुपर्छ ।

(ग) “स्टक” भन्नाले यस ऐन अन्तर्गत निष्काशित गरिएको स्टकलाई सम्झनुपर्छ ।

(घ) “बैंक” भन्नाले नेपाल राष्ट्र बैंकलाई सम्झनुपर्छ ।

(ङ) “तोकिएको” वा “तोकिए बमोजिमको” भन्नाले यो ऐन अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिए बमोजिमको सम्झनु पर्छ ।

३. **कुनै सम्पत्ति प्राप्त गर्न सकिने**: (१) सार्वजनिक हितको लागि कुनै सम्पत्ति प्राप्त गर्न आवश्यक सम्झेमा नेपाल सरकारले सो सम्पत्ति प्राप्त गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम प्राप्त गरिएको सम्पत्तिको क्षतिपूर्तिको अङ्क नेपाल सरकारबाट तोकिएको अधिकारीले निर्धारण गर्न सक्नेछ ।

(३) उपदफा (२) बमोजिम निर्धारण गरिएको क्षतिपूर्तिको अङ्कमा चित्त नबुझ्ने व्यक्तिले सो निर्धारणको सूचना पाएको मितिले ३५ दिन भित्र नेपाल सरकारमा उजूर गर्न सक्नेछ र नेपाल सरकारबाट भएको निर्णय अन्तिम हुनेछ ।

(४) माथि जे सुकै लेखिएको भएतापनि कुनै सम्पत्तिको क्षतिपूर्ति प्रचलित कानून बमोजिम तोकेको भए सोही बमोजिम निर्धारण भई यो ऐन अन्तर्गत क्षतिपूर्ति दिन सकिनेछ ।

४. **क्षतिपूर्ति दिने**: कुनै नेपाल कानून बमोजिम उन्मूलन भएको, प्राप्त गरिएको वा प्राप्त गरिने सम्पत्तिको क्षतिपूर्ति यस ऐन अन्तर्गत स्टकको रुपमा दिन सकिनेछ ।

तर नेपाल सरकारले चाहेमा क्षतिपूर्ति पाउनेलाई नगदकै रुपमा पनि दिन सक्नेछ ।

५. **स्टक निष्काशित गर्ने अधिकार**: यस ऐन अन्तर्गत दिइने क्षतिपूर्तिको लागि तोकिए बमोजिमको ढाँचाको स्टक आवश्यकतानुसार नेपाल सरकार वा बैंकले निष्काशित गर्न सक्नेछ ।

६. **स्टकको साँवा र ब्याजको भुक्तानी**: प्रचलित नेपाल कानूनमा जेसुकै लेखिएको भए तापनि धनी वा निजले इच्छाएको व्यक्तिलाई नेपाल सरकारको तर्फबाट बैंकले स्टकमा उल्लेख भए बमोजिमको साँवा र ब्याजको भुक्तानी दफा ७ को अधीनमा रही दिनेछ ।

७. **भुक्तानी अवधि र ब्याजको दर**: (१) स्टकको भुक्तानी अवधि र ब्याजको दर देहायमा तोकिएको माथिल्लो हदमा नबढाई नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिन सक्नेछ :-

(क) भुक्तानी अवधि २० वर्ष,

(ख) ब्याजको दर ५ प्रतिशत ।

(२) उपदफा (१) मा जेसुकै लेखिएको भएतापनि नेपाल सरकारले चाहेमा कुनै सम्पत्ति उन्मूलन वा अधिग्रहण गरिएको मितिदेखि नै ब्याजको रकम दिन सकिनेछ ।

८. **स्टकको ट्रष्टी बैंक हुन सक्ने**: (१) यस ऐन बमोजिम दिइएको स्टकको ट्रष्टी बैंक हुन सक्नेछ ।

(२) बैंकले धनीको नाम आफनो खातामा दर्ता गरी निजलाई तोकिए बमोजिमको निस्सा दिनुपर्छ ।

(३) धनीले चाहेमा बैंकले निजको स्टकलाई आफनो जिम्मामा लिई वर्षमा दुई पटकमा नबढाई तोकिए बमोजिमको ब्याजको भुक्तानी दिन सक्नेछ ।

९. **स्टकको व्ययभार**: यस ऐन अन्तर्गत दिइएको स्टकको भुक्तानीको रकम सञ्चित कोष प्रति व्ययभार हुनेछ ।

१०. **ऋण मोचन कोष खडा गर्न सक्ने**: नेपाल सरकारले यो ऐनको प्रयोजनको लागि ऋण मोचन कोष खडा गर्न सक्नेछ ।

११. **स्टक सम्बन्धी कारवाही**: यस ऐन बमोजिम निष्काशित स्टक सम्बन्धी कारवाही बैंकले मात्र गर्न सक्नेछ र सो कारवाही गर्दा नेपाल सरकारबाट स्वीकृत ढाँचामा स्टकको आर्थिक स्थिति बारेको प्रतिवेदन समय समयमा नेपाल सरकारमा दिनुपर्छ ।

१२. **स्टकको नामसारी**: धनीले स्टकको नामसारीको लागि लिखित अनुरोध गरेमा बैंकले तोकेबमोजिमको फीस ली सबै कुरा बुझी नामसारी गरिदिन सक्नेछ ।

१३. **कुनै स्टकको धनीको सम्बन्धमा झैझगडा उत्पन्न भएमा** : कुनै स्टकको धनीको सम्बन्धमा कुनै किसिमको शङ्का झैझगडा उत्पन्न भएमा अदालतबाट ठहरे बमोजिम हुनेछ ।

१४. **बिर्ता उन्मूलन ऐन, २०१६ मा संशोधन** : बिर्ता उन्मूलन ऐन, २०१६ मा देहाय बमोजिम संशोधन गरिएको छ :-

(क) दफा ९ को उपदफा (१) मा रहेको "सोही अनुसूचीमा लेखिएको रीत बमोजिम" भन्ने शब्दहरुलाई झिकिएकोछ ।

(ख) भइरहेको अनुसूचीको "क्षतिपूर्तिको रीत" मा रहेका वाक्यहरुलाई झिकिएकोछ ।

१५. **नियम बनाउने अधिकार** : यो ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले बैंकको राय लिई नियमहरु बनाउन सक्नेछ ।

---

**द्रष्टव्यः**

१. नेपाल कानून (संशोधन) ऐन, २०२४ द्वारा रुपान्तर भएका शब्दहरुः-

(क) "गजेट" को सट्टा "राजपत्र"

(ख) "रिपोर्ट" को सट्टा "प्रतिवेदन" ।

२. केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ ले देहायको शब्दको सट्टा देहायको शब्द राखी रुपान्तरण गरेको छ :

"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।